**अन्तरलिङ्गी व्यक्तिहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८ (नमूना / मस्यौदा)**

**प्रस्तावना :** नेपालको संविधान २०७२ धारा १२ ले व्यवस्था गरे बमोजिम अन्तरलिङ्गी यौन विशेषता भएका व्यक्तिहरूले आफ्नो लैङ्गिक पहिचान अनुसारको नागरिकता प्रमाणपत्र लगायत वैयक्तिक कागजात कायम गर्न पाउने अधिकारको निर्वाध प्रयोग गर्न गराउन एवं यस अदालतबाट प्रतिपादन भएका लैङ्गिक पहिचान सम्बन्धी आदेश, फैसला तथा नजीर साथै अन्तरलिङ्गी यौन विशेषता भएका व्यक्तिहरूको लैङ्गिक पहिचानसँग सम्बन्धित नेपालको संविधान २०७२ का मौलिक हकहरू कार्यन्वयन गर्नका लागि कानून निर्माण नभएसम्म निर्देशिका जारी हुनु वाञ्छनीय भएकाले,
सर्वोच्च अदालतले *अन्तरलिङ्गी यौन विशेषता भएका व्यक्तिहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८* जारी गरेको छ ।

**<u>१. संक्षिप्त नाम र प्रारम्भ :</u>** (१) यस निर्देशिकाको नाम “अन्तरलिङ्गी यौन विशेषता भएका व्यक्तिहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८” रहेको छ ।

(२) यो निर्देशिका जारी भएको मितिले १६औं दिनबाट प्रारम्भ हुनेछ ।

**<u>२. परिभाषा :</u>** विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस निर्देशिकामा,—

(१) "अन्तरलिङ्गी व्यक्ति" (Intersex person) भन्नाले पुलिङ्गी वा स्त्रीलिङ्गी शरीरका परम्परागत धारणाहरूमा नअटाउने यौन विशेषता भएका व्यक्ति भनेर बुझ्नुपर्छ ।

(२) "अन्तरलिङ्गी गैर-द्वयसांखिक व्यक्ति" (Intersex non-binary person) भन्नाले अन्तरलिङ्गी यौन विशेषता भएका गैर-द्वयसांखिक लैङ्गिक पहिचानका व्यक्ति भनेर बुझ्नुपर्छ ।

(३) "अन्तरलिङ्गी पारलैङ्गिक व्यक्ति" (Intersex transgender person) भन्नाले अन्तरलिङ्गी यौन विशेषता भएका पारलैङ्गिक व्यक्ति भनेर बुझ्नुपर्छ ।

(४) "यौन विशेषता" भन्नाले कुनै व्यक्तिको यौनाङ्ग, प्रजनन ग्रन्थी तथा यौन गुणसुत्र (chromosome) को ढाँचाले निर्धारण गर्ने शारीरिक भेद भनेर बुझ्नुपर्छ ।

(५) "वैयक्तिक कागजात" भन्नाले नागरिकता प्रमाणपत्र, जन्म दर्ता, शैक्षिक प्रमाणपत्रहरू, राष्ट्रिय परिचयपत्र, मतदाता परिचयपत्र, जग्गाधनी पूर्जा, घरधनी पूर्जा, सवारी चालक अनुमतीपत्र, सवारी दर्ता प्रमाणपत्र, राहदानी, अपाङ्गता परिचयपत्र लगायत सरकारी, अर्ध-सरकारी, गैर-सरकारी तथा निजी निकाय एवं संस्थाहरूले प्रदान गरेको परिचयपत्र, प्रमाणपत्र तथा कागजात भनि सम्झनुपर्छ ।

**३. लैङ्गिक पहिचानको हक :** (१) अन्तरलिङ्गी यौन विशेषता भएका व्यक्तिलाई आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान अनुसार जीवनयापन गर्ने अधिकार हुनेछ ।

(२) अन्तरलिङ्गी यौन विशेषता भएका व्यक्तिलाई आफ्नो लैङ्गिक पहिचान सहितको स्वतन्त्र व्यक्तित्व बिकासको अधिकार हुनेछ ।

(३) अन्तरलिङ्गी यौन विशेषता भएका व्यक्तिलाई आफ्नो लैङ्गिक पहिचान सहितको परिचय स्थापित गर्ने अधिकार हुनेछ ।

**४. शारीरिक निष्ठाको हक :** (१) अन्तरलिङ्गी यौन विशेषता भएका व्यक्तिलाई आफ्नो शारीरिक निष्ठा तथा स्वायत्तताको अधिकार हुनेछ ।

(२) अन्तरलिङ्गी यौन विशेषता भएका व्यक्तिलाई तिनको यौन विशेषता कथित "सामान्य" बनाउनका लागि कुनै शल्यक्रिया वा चिकित्सकीय हस्तक्षेप अवलम्बन गर्न बाध्य पारिनेछैन ।

**५. जन्म दर्ताबाट वञ्चित नगरिने :** (१) जन्मका बखत दुबै यौनाङ्ग वा अस्पष्ट यौनाङ्ग लिएर जन्मेका अन्तरलिङ्गी बच्चाहरूलाई जन्म दर्ताबाट वञ्चित गरिनेछैन ।

(२) उपदफा (१) बमोजिम जन्मका बखत दुबै यौनाङ्ग वा अस्पष्ट यौनाङ्ग लिएर जन्मेका अन्तरलिङ्गी बच्चाहरूको जन्म दर्तामा लैङ्गिक महल उल्लेख गरिनेछैन ।

(३) उपदफा (१) बमोजिम जन्मका बखत दुबै यौनाङ्ग वा अस्पष्ट यौनाङ्ग लिएर जन्मेका अन्तरलिङ्गी बच्चाहरूलाई लैङ्गिक तटस्थ प्रकृतिको नाम दिनुपर्नेछ ।

(४) उपदफा (२) मा जेसुकै लेखिएको भएतापनि तथ्याङ्कीय प्रयोजनका लागि व्यक्तिको पहिचान र व्यक्तिगत अभिलेखसँग नजोडिने गरी अन्तरलिङ्गी व्यक्तिको अभिलेख राख्न सकिनेछ ।

(५) जन्मकै बखत नदेखिएको तर बाल्यावस्थाको कुनै समयमा नीज अन्तरलिङ्गी भनि थहा पाएको खण्डमा लैङ्गिक महल उल्लेख भई बनेका वैयक्तिक कागजात संशोधन गरी लैङ्गिक महल हटाउन सकिनेछ ।

(स्पष्टिकरणः- उदाहरणका लागि जन्मका बखत योनी मात्र दृश्यक भएको तर बाल्यावस्थाकै कुनै उमेरमा आन्तरिक अण्डकोष देखिएको अवस्थामा, जन्मका बखत शिश्न (लिङ्ग) मात्र दृश्यक भएको तर बाल्यावस्थाकै कुनै उमेरमा आन्तरिक पाठेघर देखिएको अवस्थामा ।)

**<u>६. लैङ्गिक पहिचान सहितको कानूनी पहिचानको अधिकार :</u>** (१) अन्तरलिङ्गी यौन विशेषता भएका व्यक्तिलाई आफ्नो स्वःअनुभूती बमोजिम महिला, पुरुष वा गैर-द्वयसांखिक लैङ्गिक पहिचानअनुसार नीजको वैयक्तिक कागजातहरू प्राप्त गर्ने अधिकार हुनेछ ।

(२) दफा ५(२) बमोजिम अन्तरलिङ्गी यौन विशेषता भएका व्यक्तिलाई जन्मका बखत कुनै लैङ्गिकता उल्लेख नगरी जारी गरिएका तथा दफा ५(५) बमोजिम लैङ्गिक महल हटाइएको वैयक्तिक कागजातहरूमा आफ्नो लैङ्गिक पहिचान कायम गर्ने अधिकार हुनेछ ।

(३) अन्तरलिङ्गी पारलैङ्गिक व्यक्तिको हकमा पारलैङ्गिक महिला तथा पारलैङ्गिक पुरुषहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८ बमोजिम लैङ्गिक पहिचान कायम गर्न सक्नेछ ।

(४) अन्तरलिङ्गी गैर-द्वयसांखिक व्यक्तिको हकमा गैर-द्वयसांखिक तथा तेस्रोलैङ्गिक व्यक्तिहरूको लैङ्गिक पहिचान कायम सम्बन्धी निर्देशिका, २०७८ बमोजिम लैङ्गिक पहिचान कायम गर्न सक्नेछ ।

**नमूना निर्देशिका मस्यौदा गर्ने व्यक्ति :** रिट निवेदक रुक्शना कपाली



नेपाल संवत् ११४२ चौला ११, २०७८ चैत्र १५ ।